# नेपाल ब्रिटेन डट कमप्रति खेद् प्रकट

गत ५ अगष्ट, २०१३ देखि नेपाल ब्रिटेन डट कममा प्रकाशित साथै ६ अगष्ट २०१३ मा प्रकाशित बेलायतबाट प्रकाशित सम्पूर्ण पत्रपत्रिकामा खुलस्त रुपमा प्रकाशित भएकोमा सम्पूर्ण पत्रकारहरुलाई धन्यवाद टक्र्याउन चाहन्छु । साथै, नेपाल ब्रिटेन डट कमका सम्पादक, पत्रकारहरु, बेलायतका बौद्धिक निर्णायक मण्डलका सदस्यहरुद्वारा छनौटमा पर्नुभएका बेलायतका वास्तविक उत्कृष्ट वरिष्ठ नेपाली व्यक्तित्व मेजर रिटायर्ड टिकेन्द्र दल देवान, वरिष्ठ पत्रकार खगेन्द्र नेपालीलगायत विभिन्न व्यक्तिलाई मेरो हृदय देखि नै हार्दिक बधाई प्रकट गर्न चाहन्छु ।

विदेशी भूमिमा गुल्मी जिल्लाबाट बेलायत आई बसोबास गर्नुभएको सबै नेपालीहरुलाई संगठित गर्दै मातृभूमि नेपालको बिकासमा एउटा ईट्टा थप्ने उद्देश्यका साथ मेरो संयोजकत्वमा गुल्मी जिल्ला समाज यूकेको स्थापना गरेर सन् २००५-२००७ सम्म संयोजक भएर काम गरें । त्यसैगरी सन् २००७ देखि २०१३ सम्म सर्वसहमतिद्वारा नै अध्यक्ष जस्तो जिम्मेवारी पदमा बसी सबै गुल्मेलीहरुलाई बेलायतमा एकवद्ध बनाउन सफल भई हालमा म आफै सबैको सहमतिमा २४ अप्रिल २०१३ मा यस संस्थाको अध्यक्ष पद हाम्रा अर्जुन गौतमलाई हस्तान्तरण गरिएको अवगत गराउन चाहन्छु । गुल्मी जिल्ला समाज यूकेले मेरो अध्यक्षतामा बेलायत तथा जन्मभूमि नेपालको गुल्मी जिल्लामा स्वास्थ्य, शिक्षा, अपाङ्ग, भौतिक बिकासमा २००७-२०१३ सम्म विभिन्न समयमा गरिएको सामाजिक कार्यको विवरण समाजद्वारा प्रकाशित ऐतिहासिक "हाम्रो सेवा" नामक पुस्तीकाको पेज नं. १ देखि ७ सम्म अध्ययन गर्न हुनका लागि हार्दिक अनुरोध गर्दछु ।

नेपाल ब्रिटेन डट कमले ५ अगष्ट २०१३ मा मिडिया पर्सानालिटी अफ द इयर २०१३ को छनौटमा हाम्रो गुल्मी जिल्ला समाज यूकेले गएका बर्षहरुमा झै उच्च परोपकारी काम गरेकोमा उच्च मूल्यांकन गरीदिनु भएकोमा धन्यवाद टक्राउन चाहन्छौं । तर भर्खर मात्र संस्थाको अध्यक्ष अभिभारा लिनु भएका वर्तमान अध्यक्ष अर्जुन गौतमलाई नाटकीय ढङ्गबाट सम्मानित गरेको देख्दा म स्तब्ध भएको छु । कारण जति पनि सम्पूर्ण काम म संस्थापक अध्यक्ष भएको अवधिमा गरिएको अवगत गराउनु चाहन्छु । त्यस्तै कामहरु भर्खर मात्र नवनिर्वाचित अध्यक्ष जसले संस्थाको अभिभारा लिन नपाउदै सम्पूर्ण अर्जुन गौतमले गरेको भनि व्याख्या गरेको देख्दा म अति नै दुःखित् भएको छु, गम्भिर भएको छु र स्तब्ध पनि । जुनकुरा पत्रपत्रिकामा प्रकाशन हुनु भन्दा पहिला यसलाई सुधारी पाउ भनि फोन मार्फत अवगत गराउदा पनि पुनः प्रकाशित हुन आएकोमा म खेद् प्रकट गर्दछु । नेपाल ब्रिटेन डट कमका सम्पादक, संचालक साथै मिडिया पर्सानालिटी अफ द इयर २०१३ का निर्णायक मण्डलका लगायतका उच्चतम् बुद्धिजिविहरुले जुन सत्यतथ्यलाई नबुझी, नाटकीय निर्णय गरी बेलायतको एक सफल र एक नेपाली हामी नेपाली भनि परिचित संस्था जसले अन्य समुदायमा पनि नौमतीको धुनसंग नेपालको राष्ट्रिय झण्डा सहित परिचित गर्दै, एक छाना मुनी रमाएका गुल्मेलीलाई बिभाजन गराउन र साथै एकआपसमा मुठभेड सम्म गराउने भूमिका प्रयास गरेको महसुस गरेको छु । साथै, म ओमप्रसाद थापा मगरको अध्यक्षमा भएका कामहरु, अर्जुन गौतमले गरेको भन्ने शब्दले एक चलाखीपूर्वक जातिय भेदभाव भएको साथै मेरो आफ्नो चरित्रको मानहानी गरेकोमा खेद् प्रकट गर्दछु । साथै बेलायत भरिका नेपाली संघसंस्था, पत्रकार र बुद्धिजिविहरुमा यस्ता क्रियाकलाप हुन नदिन सचेत गराउनु चाहन्छु । ब्रिटेन नेपाल डट कमले बिना अध्ययन गरिएको छनौटमा म पर्नु, नपर्नु भन्दा पनि देशमा होस् वा विदेशमा होस्, सामाजिक कार्यमा लागेका मानिसहरुलाई मिडियाले प्राथमिकता दिनु पर्नेमा झन् ओझेलमा पार्ने काम भएमा पक्कै पनि आगामी दिनहरुमा वास्तविक सामाजिक कार्यकर्ताहरुको मनोवल घटाउने काम हुनेछ भन्दै आफ्नो दुईशब्द टुंग्याउनु चाहन्छु ।

अन्त्यमा गुल्मी जिल्ला समाज यूकेका कार्यसमितिले यसको सत्यतथ्यको तत्काल बुझी नेपाल ब्रिटेन डट कमसंग सत्यतथ्य समाजलाई बुझाओस् । साथै गुल्मी समाज यूकेका सम्पूर्ण आत्मीय मित्रहरुमा कुनै बिचलित नभएर एकवद्ध, एक मन भई हामी जो जहां छौ, त्यसै अनुरुप धैर्य भएर बसिदिन हार्दिक अपील गर्दछु ।

..................................

ओमप्रसाद थापा
संस्थापक अध्यक्ष एव निवर्तमान अध्यक्ष/ हाल सल्लाहकार
गुल्मी जिल्ला समाज यूके
प्रमुख संयोजकः प्रथम नौमती बाजा
उपाध्यक्षः ग्रेटर रसमोर नेपाली कम्यूनिटी
सक्रिय सदस्यः विजिडब्लुएस
सक्रिय सदस्यः एनआरएन यूके
सक्रिय सदस्यः इन्टेक ८५ यूके
सक्रिय सदस्यः मगर संघ यूके
फोनः ०७८८६९२८४३०
ईमेलः omkaucha@hotmail.com